## कथा सारांश

ओखलढुङ्गांको एउटा गाउँमा बनीबुतो गरेर जीविकोपार्जन गर्ने रनेको आफ्नै छिमेकी लाहुरेसँग झगडा पर्छ । हाटबजारमा लाहुरेले रनेकी स्वास्नी समातेर नाच्न खोजेकै कारण रनेले लाहुरेलाई 'नमारी छोड्दिन' सम्म भन्छ । गाउँलेहरूले रने र लाहुरेलाई छुट्याएर पठाउँछन् ।

साँझ घरमा सेती रनेलाई फकाउने प्रयास गर्छे । एउटा किरो आइपुग्छ । स्वास्नीले 'नमार नमार' भन्दा भन्दै रनेले किरा मार्छ । संयोगवश त्यतिबेलै छिमेकी लाहुरेको कसैले हत्या गर्छ । लाहुरेको घरबाट आवाज आएपछि रने त्यतै तिर लाग्छ तर रनेले हत्यारालाई राम्ररी ठम्याउन नपाउँदै हत्यारा फरार हुन्छ ।

अब रनेको मनमा अनेक शंका, उपशंकाले घेर्न थाल्छ । उसलाई आफ्नै मनको बाघले खान्छ र गाउँबाट भाग्दा बाटोमा प्रहरीले पक्रन्छ ।

रनेलाई गाउँको कचहरीमा सरजमिनको लागि उभ्याइन्छ । सेतीबाहेक अन्य सबै साक्षीहरूको बयानले रनेलाई नै दोषी ठहर गर्छ । यसरी एउटा निर्दोष रने 'परिबन्द'मा पर्छ ।

## निर्देशकीय

"हतपतको काम लतपत" सुन्नु भएकै होला ! हतार भो, हतार गरियो पनि शुरूमै माफी माग्छु ।

गुरूबा भन्नुहुन्छ, "आफ्नो पारामा आफू खुशी काम गर्ने हो, बिग्रियो भने यत्रैसिती !"

सायद मैले अलि बेस्सरी नै बिगार्ने प्रयास गरेको छु । यत्रैसिती ! गुरूकुल र बारूलाजलाई धन्यवाद ।

मण्डला थिएटर र साथहिरूलाई झन् धेरै धन्यवाद । नमरी बाँचे, प्रकृतिले साँचे फेरि पनि भेट होला नि त !
जय देश जय जनता

– प्रवीण खतिवडा

## मञ्चमा

बिकास जोशी
बिनिता गुरूङ
रोहित पौडेल
बुद्धि तामाङ
सुलक्षण भारती
उमेश तामाङ
रञ्जना ओली
सोमनाथ खनाल
बिजय बराल

## नेपथ्यमा

| | |
|---|---|
| मञ्च परिकल्पना | : प्रवीण खतिवडा |
| मञ्च निर्माण | : बिजय बराल, सजन थापा र हुम बिसी, |
| प्रकाश परिकल्पना | : प्रवीण खतिवडा |
| परिचालन | : अंकित खड्का (बासुदेव) |
| ध्वनी संयोजन | : प्रवीण खतिवडा |
| परिचालन | : संयोग गुरागाईं |
| पोस्टर/ब्रोसर | : सिजन दाहाल |
| रङ/स्केच | : सजन थापा |
| स्वागत सत्कार | : भाष्कर वली,मिलन कार्की |
| अभिलेख | : सिजन दाहाल |
| सुचना तथा टिकट | : |
| कार्यालय व्यवस्थापन | : सपना कुमारी चौधरी |
| वित्तिय व्यवस्थापक | : उमेश तामाङ |
| मञ्च व्यवस्थापक | : बिकाश जोशी |
| मुल कथा | : पुष्कर शमशेर |
| निर्देशक | : प्रवीण खतिवडा |

हार्दिक आभार
सुनिल पोखेल, आभास दाई, रामेश दाई, कुटुम्ब, जुलिया स्यारिङ्गर, विपिन कार्की, बारूलाज, नेसनल स्कुल अफ फोटोग्राफी र मण्डलाका छरछिमेकीहरू ।



mandala theatre-nepal

पुष्कर शमशेरको कथा "परिबन्द"मा आधारित नाटक

# सरजमिन



निर्देशक
प्रवीण खतिवडा

मिति : १५ – ३० गते असोज, २०७२
(सोमबार बाहेक हरेक दिन)
समय : साँझ ५:१५ देखि
स्थान : मण्डला नाटकघर, अनामनगर
(सिहंदरबार पूर्वीगेट अगाडि)
सम्पर्क : ०१-४२४९७६१

fb.com/MandalaTheatreNepal @MandalaTheatre
http://www.mandalatheatre.com

खुशी लाग्यो ।

-उमेश तामाङ

"सरजमिन" मेरो पाँचौ नाटक हो स्टेजमा । यथार्थवादी कथामा काम गर्दा चुनौती फरक थियो मेरो लागि । अग्रज रंगकर्मीहरूको साथ र सहयोगले मलाई काम गर्न निकै सहज भएको छ । यो नाटकले मलाई धेरै कुरा सिक्ने अवसर दिएको छ ।

- रन्जना ओली

पहिलो चरणमा प्रवीण दाजुलाई मन परेको कथामा सरसल्लाह गर्‍यौं । हामी सँग स्क्रीप्ट थिएन । पुरानो परिवेशको कथाले मलाई हौस्यायो । यो नाटकले मलाई नेपाली समाज र राजनीतिक परिवेशलाई गहिरिएर पढ्ने र बुझ्ने अवसर दियो । कथाबाट नाटक सम्म आइपुग्दा मैले आफूलाई शुन्यमा पाएँ । यी सबै कुरा सिकाईका प्रक्रिया रहेछन् । म सिक्ने क्रममै छु ।

- बिकाश जोशी

सरजमिनका निर्देशक प्रवीण खतिवडाले मलाई लामो समय पछि स्टेजमा उतार्नु भएको छन् । पुष्कर शमशेरको यथार्थवादी कथा परिवन्दलाई विशेषतः इम्प्रोभाइज गरेर पुरानो परिवेशमा काम गर्न जति कठिन भयो त्यति नै मजा पनि भयो ।

- बुद्धि तामाङ

'ब्याक टु ब्याक' भनेको यही हो कि क्या हो । ब्याकस्टेजको कामलाई थाँती राख्दै लामो समय पश्चात नाटक "सिरूमारानी"को स्टेजमा उत्रिएको थिएँ । लगत्तै सरजमिनको स्टेजमा मौका पाए । मण्डलासँग मलाई परिचय गराइदि( नहुने प्रवीण दाजुकै नाटकमा यसरी खेल्न पाउँदा पुलकित भएको छु । भुलचुक लिउँला, दिउँला ।

-सोमनाथ खनाल

प्रविण खतिवडा दाजुको काम गर्ने शैलीले मलाई तान्यो । एकदमै शान्त भएर काम गर्ने उहाँको स्वभावले काम गर्न बेग्लै उर्जा आउँथ्यो । कलाकारहरूले चाहिए जति गर्न नसक्दा उहाँ बेलाबखत पड्किनु पनि हुन्थ्यो । अनि त झन बढी उर्जा आउथ्यो र काम गर्थ्यौं ।

- बिजय बराल

कथा परिबन्द पढ्दा र नाटकको फर्म्याट हुँदै सरजमिन सम्म आइपुग्दा कथाको मजा चै म भित्रबाट हराएको हो कि ?

- सुलक्षण भारती

आफू भन्दा सिनियर दाइहरू सँग काम गर्न पाउँदा एक दमै खुशी छु । रिहर्सलको दौरानमा मैले फरक कुराहरू अनुभव गर्न पाएँ र धेरै कुराहरू सिक्न पाएँ । अग्रज दाजु प्रवीण खतिवडाको काम गर्ने शैलीले म प्रभावित भएकी छु ।

-बिनिता गुरूङ

अभिनयको यात्रामा म बामे सर्दैछु । यति छोटो समयमै आफू भन्दा अग्रज रंगकर्मीहरूसँग काम गर्न पाउनु मेरो लागि अहोभाग हो । आदरणीय दाजु प्रवीण खतिवडाले मलाई विश्वास गर्नु भयो । उहाँ प्रति आभारी छु ।

- रोहित पौडेल

त्यसै त्यसै ब्याक स्टेजको काम गर्ने रहर लागिराथ्यो । ठ्याक्कै समय मिल्यो सरजमिनमा । कन्ट्रोल रूममा बसेर सरजमिनमा काम गर्दैछु । बडा गज्जब लागिराछ ।

-अंकित खड्का

स्टेजमा गरिराख्ने बानी दर्शकलाई फेस गर्नु त चुनौती नै हो । तर त्यस भन्दा नि थप चुनौती थपिएको छ यो पटक । कन्ट्रोल रूममा बसेर एकै पटक दर्शक र कलाकारलाई फेस गर्नु नयाँ अनुभव मेरो लागि ।

- संयोग गुरागाईं

सृजना सर्वकालिक हुन्छ कि सामयिक ?

अस्ति भर्खरै एकजना दर्शकले तपाईंहरूका नाटकमा समय र देशको चेत हुँदैन भनी झपारेको अहिले मण्डलावाणी लेख्न बस्दा सम्झदैछु । समय साँच्चीकै डरलाग्दो भएको छ । केवल आफ्ना लागि नाटक गर्छु भन्नु अलि चुनौतिपूर्ण हुन्छ ।

राणाकालिन परिवेशमा लेखिएको पुष्करशमशेरको कथा परिबन्दलाई नाटक सरजमिन बनाएर यसपटक मण्डलाको प्रेक्षालयमा प्रस्त'त गर्दैछौं । कथाको घटनाले अहिलेको देशको चेतलाई प्रतिनिधित्व नगर्ला तर परिस्थितिले निर्माण गरेको चरित्रको भोगाई उस्तै छ । हामी यस्तै भोगाई र चरित्रका पक्षमा नाटक गरीरहेका छौं । त्यसभन्दा माथि उठ्न हामीलाई अलि समय लाग्ला ।

प्रवीण खतिवडा अब्बल अभिनेता ह'न् । अभिनेताको रूपमा उनले गरेका थ्प्रै कामहरू हामीले हेरीसकेका छौं । एउटा अन'भवी अभिनेतामा क'शल निर्देशकको ग'ण ह'न्छ भन्ने प'ष्टि खतिवडाले गत वर्ष हेड्डा ग्याब्लरको निर्देशन गरेर गरीसकेका छन् । यसपाला उनको सिर्जनशीलताको साथमा कल्पनाशीलता पनि थपिएर सरजमिन बनेको छ । तपाईंहरूलाई कस्तो लाग्छ, प्रतिक्रिया दिन'होला ।

देशको विषम परिस्थितिमा पनि हामी नाटक गरीरहेका छौं । यो हाम्रो धर्म हो । हाम्रो धर्मप्रति सहिष्ण' भएर नाटक हेर्न आइदिन'भएकोमा मनैदेखि कृतज्ञता प्रकट गर्दछौं ।

नजीकिदै गरेको नेपालीहरूको महान चाड दशै र तिहारको हार्दिक मंगलमय श'भकामना ।

चाडवाड मनाइसकेर भेट्दा तपाईंहरूलाई स'नाउन हामीसँग पक्कै पनि ख'शीको खवर ह'नेछ ।

- राजन खतिवडा